## गुरुविचार

सुलक्षण मेरो भाई हो । ज्वाइँ पनि हो । यो नाटक मैले पढेको छु । मान्छेलाई किन बिल गेट्स हुन मन लाग्छ, था' छैन । मन त हो, गरीखाउ ।

**–सुनील पोखरेल**

## नेपथ्य विचार

मजा आयो ।

– **उमेश तामाङ**, प्रकाश परिकल्पनाकार/परिचालक

१५ वर्ष भएछ नाटकको सेट बनाउन थालेको । गरीआएको काम हुनाले हरेक पटक सेट बनाउँदा सहज पनि लाग्छ तर त्यहाँ चुनौति पनि हुन्छन् । यसपटक अलि फरक खालको सेट रहेछ । त्यो कसरी थाह भयो भने थुप्रैपटक बनाउने, भत्काउने र फेरि बनाउने काम भयो । निकै सिक्न बाँकि पो रहेछ ! सायद सिक्दै छु कि ?

– **हुम बिसी,** मञ्च निर्माता

रंगमञ्च आफैंमा रमाउँदै अरूलाई रमाउन सिकाउने ठाउँ हो । म पनि यसभित्रै रहेर रमाइरहेको छु । नाटक बिलगेट्स पण्डितमा उही काम फरक तरिकाले गर्न खोजेका छौं । नाटकको सफलताको शुभकामना ।

– **रामशरण रेग्मी**, मञ्च निर्माता

कला र प्रविधिको यो सहकार्य गरीरहँदा हामीलाई के अनुभव भयो भने अवसरहरूलाई पर्खेर बस्नुभन्दा पनि सम्भव भएसम्मका क्षेत्रहरूमा खोज्नुपर्ने हुँदोरहेछ । सिर्जनामा स्पष्ट विचारको आवश्यकता चैं महत्वपूर्ण हुँदोरहेछ । हाम्रा अध्यक्ष इन्जिनियर प्रशान्त घिमिरेले सधैं भन्नुहुन्छ – 'इञ्जिनियरले केवल अरूका काम गरिदिने हैन, आफैंले कामको सृजना चै गर्ने हो ।' यसपटक नाटकको क्षेत्रमा मण्डलासँग मिलेर काम गरिरहँदा त्यस्तै नयाँ किसिमको काम गर्न सकेको अनुभव भयो । यो विशुद्ध इन्जिनियरिङ अवसरका लागि मण्डलालाई धेरै अर्थमा धन्यवाद ।

– **अनिल कार्की, समीर श्रेष्ठ, गोपाल भट्ट र अरूण अर्याल**
**एडभान्स्ड रोबोटिक्स क्लव (एआरसी)**, मञ्च निर्माता

लामो समयपछि डिजाइनिङको काम गर्न बसे । आनन्द भा'छ ।

– **बिकाश जोशी**, **पोस्टर/ब्रोसर डिजाइनर**

## हार्दिक धन्यवादः

सुनील पोखरेल, डा. सन्दर्भ गिरि, सुव्रत आचार्य, निलिमा कोयुङ्ग राई, नवीन गुरूङ्ग, जीवेश रायमाझी, आकांक्षा कार्की, गुञ्जन दीक्षित, इँगि होपो कोइँच, रोहित पौडेल, मनिष निरौला, मजबज म्यागेजिन, एडभान्स्ड इञ्जिनियरिङ्ग कलेज, जुलिया स्यारिङ्गर, सिजन दाहाल, बिकाश बुढाथोकी, आइभी लिन्ड्सालु र मण्डलाका साथीहरू ।

**"Billgates Pandit"**
is not a story of a rich person; nor it's a story of people who wish to be rich and die poor. It is an imaginative and experience story about a time-bound character, which is carrying a number of desires and dreams.

## मञ्चमा

बिजय बराल
सृजना अधिकारी
सोमनाथ खनाल
आर्जेश रेग्मी
केनिपा सिं
कुशल पाण्डे
निशा कार्की

| | |
|---|---|
| मञ्च परिकल्पनाः | सुलक्षण भारती र अनिल कार्की |
| मञ्च निर्माणः | हुम बिसी, रामशरण रेग्मी र एडभान्स्ड रोबोटिक्स क्लव |
| वेशभूषाः | सुलक्षण भारती |
| प्रकाश परिकल्पनाः | उमेश तामाङ र सुलक्षण भारती |
| परिचालनः | उमेश तामाङ |
| गीतहरूः | सागर प्रसाई र विवेक ओझा |
| सङ्गीतः | आधा सुर |
| पेन्टिङ संयोजनः | जया शर्मा, जुजुकाजी श्रेष्ठ र उपकार घमाल |
| पोस्टरः | सजन थापा र बिकाश जोशी |
| विवरण पुस्तिकाः | सोमनाथ खनाल |
| स्वागत सत्कारः | आयान खड्का, अंकित खड्का, मिलन कार्की र रेणु योगी |
| बजार व्यवस्थापनः | प्रदिपकुमार चौधरी र नाजिर हुसेन |
| मञ्च व्यवस्थापनः | आर्जेश रेग्मी |
| लेखक/निर्देशकः | सुलक्षण भारती |

## सम्पर्क ठेगानाः

मण्डला नाटकघर
काठमाडौं ३२, अनामनगर (सिंहदरवार पूर्वगेट अगाडि)
फोन नं. ०१४२४९७६१/९८४१३५४५९७
इमेलः theatre.mandala@gmail.com
वेभः www.mandalatheatre.com

SUPPORTED BY







WORLDLINK




ADVANCED COLLEGE OF ENGINEERING & MANAGEMENT [ARC] Advanced Robotics Club




नाटक

# Billgates पण्डित

लेखन / निर्देशन

**सुलक्षण भारती**

मितिः २०७२ फागुन ७ गतेदेखि ३० गतेसम्म
सोमबारबाहेक हरेक दिन साँझ ५:१५ बजे
शनिवार दिउँसो १ बजे पनि
मण्डला नाटकघर, अनामनगर
(सिंहदरवार पुर्वीगेट अगाडि)
सम्पर्क नं. ०१–४२४९७६१

fb.com/MandalaTheatreNepal @MandalaTheatre
http://www.mandalatheatre.com

## नाटकको बारेमा

**बिलगेट्स पण्डित** एउटा धनी पात्रको कथा हैन न त यो जिन्दगीभरी धनी हुन चाहने तर गरीव भएर मर्ने मान्छेहरूको कथा हो । एउटा समयमा केहि थान सपना र चाहना बोकेको एउटा आम मान्छेको कल्पना र भोगाई नाटक बिलगेट्स पण्डितको सार हो । जीवनमाथि सवैका आआफ्नै दर्शन हुन्छन्, आआफ्नै विचार हुन्छन् । त्यही कुरा नाटकको हकमा पनि लागु हुन्छ । फरक कामको चाह भएकाले यो नाटक तयार भएको हो, नाटकका बारेमा अहिले यति भन्न सकिन्छ । बाँकि दर्शक र कलाकारलाई सुम्पदै छौं ।

## विचारहरु

### मण्डला विचार

(मण्डलाका निर्देशक **राजन खतिवडा**को विचार)
फरक जीवन, जगत र विकासले मानिसलाई आकर्षित गर्दोरहेछ । तिनै उत्सुकताका क्रममा हामी नयाँ परिभाषा खोजीरहेका हुन्छौं । हामीले बाँचेका समाजमा ती उत्सुकताले कहाँनेर के अर्थ राख्छ र त्यो अर्थ अरूलाई खुशी साथ बाँड्न सक्छौ कि सक्दैनौ भनी हामी कलाका विभिन्न पत्रहरू केलाउँछौं र आफ्नो अस्तित्वको खोजी गर्छौं । यो क्रम चलीरहन्छ ।

सुलक्षण भारती यस्तै उत्सुकता बोकेर अस्तित्वको खोजीमा हिंडेका युवक हुन् । केहि वर्षअघि मण्डलाको सानो गुम्बामा अभिनेताको सपना बोकेर उनी पसेका थिए । उनको उत्सुकता र अस्तित्वप्रतिको खोजले आज उनीलाई नाटक लेखक र निर्देशकसम्म धकेलेको छ ।

यो नाटकसम्म आइपुग्न यिनले धेरै विचारहरूलाई चिरफार गरे र आफूलाई निकै खियाए पनि । उनको लागि यो चुनौति र परीक्षण दुवै हो । मण्डलाको लागि भने नाट्यनिर्माणमा अर्को पुस्ता जन्माउने क्रमको निरन्तरता हो ।

यो कामबापत सुलक्षण र मण्डलालाई स्यावासी दिने वा गालि, जिम्मा आदरणीय दर्शकहरूमा नै छाड्छौं । सदाभैं सहयोग, सद्भाव र सुझावको अपेक्षा गर्दछौं ।

**विचार नं. ०**

(नाटकका लेखक/निर्देशक **सुलक्षण भारती**को विचार)
काम गर्न खोजेको छु । मेरो कामले नै मेरो विचार बोक्छ होला । यदि तपाईंलाई राम्रो लागे यसको जस एक्लै लिन्न । नराम्रो लागे बाहिर भेटेर बात मारूम्ला । नाटकमा सघाउनुहुने सवैलाई मनदेखि साधुवाद ।

**विचार नं. १**

(मण्डलाका अध्यक्ष **दयाहाङ राई**को विचार)
बिलगेट्स पण्डित एक चरित्रको नाम मात्र हो र नाटक बिलगेट्स पण्डित चैं सो चरित्रको आफूभित्रको संवाद हो ।

एक अभिनेताले आफ्नो जीवनभरी फरक फरक चरित्र बाँच्ने मौका पाउँछ । यस हिसावले उसले सधैंभरी कुनै न कुनै चरित्रसँग संगत गरेर बाँचीरहन पाउँछ र यसकारण नै दर्शकमाझ पुग्दा त्यो चरित्र सत्यजस्तो लाग्छ । आफ्नो वास्तविक जीवनशैलिलाई पर धकेलेर चरित्रहरू मार्फत कुशलताको खोजी गर्न सकिने भएकाले अभिनेता हुनु 'प्रिभिलेज्ड' मानिन्छ । यसरी चरित्रसँग बाँचिएको र आफ्नो वास्तविकतालाई पर धकेलिएको समयबीचको 'ग्याप मेन्टेनिङ डायलग' नै नाटक बिलगेट्स पण्डित हो । लेखक तथा निर्देशक सुलक्षण भारतीले अभिनयबाट नाट्ययात्रा शुरू गरेका हुन् । नाटक पढिरहँदा लाग्यो- साथी सुलक्षणले अरू चरित्रहरू भएर बाँचीरहेको हैरानीबाट फुर्सद निकालेर आफ्नो जीवनका नजीकका पात्रहरूसँग 'एउटा छुटेको संवाद' पुरा गरेका छन् । यसकारणले अभिनेताबाट निर्देशक हुँदासम्मको यो यात्रामा उनी आफैंले आफैंसँग गरेको संवाद नै नाटक बिलगेट्स पण्डित हो कि !

**विचार नं. २**

(नाटकका कलाकार **बिजय बराल**को विचार)
बिलगेट्स पण्डित मेरोलागि नौलो र चुनौतिपूर्ण काम रह्यो । यसअर्थमा कि पहिलोपल्ट म दर्शकलाई हँसाउन चाहिरहेको छैन । एउटा कलाकार भएको नाताले भिन्न चरित्रमा काम गर्न पाउनु मेरोलागि ठूलो अवसर हो र त्यस चरित्रलाई इमानदार भएर निभाउन सक्नु चैं चुनौति हो । मलाई थाह छैन, यो प्रक्रियामा म कति इमानदार ठहरिनेछु । मेरोलागि यो जीवन्त अवसर जुराइदिनुभएकोमा लेखक तथा निर्देशकप्रति आभारी छु । चरित्र गरीरहँदा घरीघरी म आफैं नै बिलगेट्स पण्डित हुँ कि जस्तो अनभुव भइरह्रयो । तपाईंहरूलाई पनि त्यस्तै महशुश गराउन खोज्ने मेरो प्रयत्न हुनेछ । गल्ति कमजोरी भए सुझाव दिनुहोला ।

**विचार नं. ३**

(नाटककी कलाकार **सृजना अधिकारी**को विचार)
मेरो लागि नाटक मेडिटेसन (ध्यान) जस्तै हो किनभने यो गरीरहँदा दैनिक जीवनमा आइपर्ने वाधा र अप्ठेरोहरूलाई बिर्सिइन्छ । त्यही भएर म नाटक गर्छु । बिलगेट्स पण्डित गर्नुको फरक कारण म कल्पना गर्न सक्दिन ।

**विचार नं. ४**

(नाटकका कलाकार **सोमनाथ खनाल**को विचार)
मञ्चमा आउन पाउनु जहिले पनि उत्साहजनक हुन्छ । अति उत्साहले कहिलेकाहिँ असलियत बिर्साइदिंदो रहेछ । यो नाटकले उत्साहका साथमा आफूलाई नियाल्ने अवसर दिएको छ । यो मौका दिएकोमा साथी सुलक्षणलाई धेरैधेरै धन्यवाद । नाटकका धेरै कामहरूमा मन खोलेर सघाउन नसकेकोमा दिक्दारी महशुश गर्दैछु । यसका लागि निर्देशक साथीले मलाई क्षमा दिनैपर्छ, यो मेरो आग्रह हो । दर्शकहरूले चैं क्षमा नदिनुहोला र नाटक हेरेपछि प्रशस्त सुझाव दिनुहोला । सवैमा हार्दिक नमस्कार ।

**विचार नं. ५**

(नाटकका कलाकार **आर्जेश रेग्मी**को विचार)
मनमा लागेका कुराहरू लेख्नुहोस् भन्नुभयो निर्देशकज्यूले । मलाई फेरि के लेखुँ के लेखुँ भयो । लेख्नैपर्दा भन्नैपर्दा हाम्रो मण्डला नाटकघरमा मञ्चन भइरहेका अन्य नाटकहरू भन्दा यो अलि फरक किसिमको नाटक छ । सुलक्षण दाईसँग काम गर्न पाउँदा खुशी लागेको छ ।

**विचार नं. ६**

(नाटककी कलाकार **केनिपा सिं**को विचार)
मैले काम गरीआएका कथाहरूभन्दा भिन्न छ नाटक बिलगेट्स पण्डितको कथा । यस्तो नौलो कथामा आफूलाई मनपर्ने कलाकारहरूसँग स्टेज सेयर गर्न पाउँदा एकदमै खुशी भएको छु । कथा भिन्न भएकोले मैले गर्ने चरित्र पनि अरूभन्दा भिन्न नै लागेको छ । यो भिन्नताको महशुशले बढी नै उत्साहित भएकी छु । यो उत्साहको अवसर दिनुभएकोमा सुलक्षण दाईलाई धन्यवाद भन्छु ।

**विचार नं. ७**

(नाटकका कलाकार **कुशल पाण्डे**को विचार)
गएको दुई वर्षयता मण्डला मेरो दोस्रो घर भएको छ । आफूलाई उत्पातै मनपर्ने कलाकारले लेखेको निर्देशन गरेको नाटकमा खेल्न पाउनुलाई मैले अहोभाग्य ठानेको छु ।

**विचार नं. ८**

(नाटककी कलाकार **निशा कार्की**को विचार)
मलाई नाटकको क्षेत्र एकदमै धेरै मनपर्छ किनभने यसले मेरो व्यक्तिगत जीवनमा पनि थुप्रै सकरात्मक परिवर्तनहरू ल्याइदिएको छ । मलाई यो किन पनि मन पर्छ भने यहाँ म आफ्ना सवै महशुशहरू अभिव्यक्त गर्न स्वतन्त्र छु । म सिक्ने क्रममा छु र मलाई यो निकै रमाइलो लागिरहेको छ । विश्वाश गरेर मौका दिनुभएकोमा सुलक्षण दाईप्रति अनुगृहित छु । मण्डला परिवारको सदस्य हुन पाएकोमा भाग्यमानी ठानीरहेकी छु आफूलाई ।